# सेनाको आँसुले झल्किएको खुसी

लेफ्टिनेन्ट (उपसेनानी) स्व. टेकबहादुर रानाभाटले दोस्रो विश्वयुद्धको लडाइमा लडेको, नेपाली सैनिकको वीरता गाथाका स्मृति र समाजमा गरेका कृतिहरू समावेश गरिएको ।

✍ इन्दु रानाभाट (वर्मा)

# सेनाको आँसुले झल्किएको खुसी

**लेखक** : इन्दु रानाभाट (वर्मा)

**प्रकाशक** : इन्जिनियर मिथिलेसकुमार वर्मा

**प्रकाशन सहयोगी** : जय बजरङ्ग प्रिन्टिङ हाउस, पोखरा

**प्रकाशित सङ्ख्या** : ५०० प्रति

**मूल्य** : रू. २००।-

**संस्करण** : फागुन २०८१, पहिलो



**मुद्रण** : हिमालय अफसेट प्रेस, नयाँबजार, पोखरा
फोनः ०६१-५७०६५१

---

**SENAKO AASULE JALKIYAKO KHUSI,**

A collection of memories by Indu Ranabhat (Verma)

# समर्पण

आदरणीय पिता–माता लेफ्टिनेन्ट स्व. टेकबहादुर रानाभाट
स्व. तारादेवी रानाभाट तथा
'उनै युगपुरुषलाई जसले हाम्रा जीवनलाई सभ्य,
सुसंस्कृत र समृद्ध बनाए ।'

गण्डकी प्रदेश सरकार
सामाजिक विकास,युवा तथा खेलकुद मन्त्रालय
पोखरा, नेपाल

पत्र संख्या : २०८१/०८२
चलानी नं. : २८

निजी सचिवालय
माननीय विन्दु कुमार थापा
मन्त्री

# शुभकामना

कास्की जिल्ला पोखरा महानगरपालिका वडा नं २१ कृस्तीमा जन्मेका लेफ्टिेन्ट स्व. टेकबहादुर रानाभाट शैक्षिक नक्षेत्रका जीवनी, कृति प्रथम संस्करण, पुस्तक विद्यालय संस्थापक श्री भविष्य निर्माण मा.वि. पोखरा २१ स्थापनाको शुभ पावन अवसर पारेर पुस्तक प्रकाशन गर्न लाग्नु भएकी रानीपौवा ११ निवासी पूर्व बैंकर इन्दु रानाभाट (वर्मा) बहिनीलाई हार्दिक बधाई दिन चाहान्छु।

शिक्षा सभ्यता, ज्ञानको ज्योति प्रतीक मानिन्छ, शिक्षाविना प्रगति सम्भव छैन। राणाकालमा नेपाली जनता शिक्षाबाट वन्चित थिए। राणा प्रधानमन्त्री पद्मशमशेरसँग मौखिक माग र श्री ३ मोहनशमशेरका जुनाफमा पुनः खड्ग निशाना लिखित आग्रह निवदेन पेश गरी सोही बमोजिम वि.सं.२००५।७।९ गते भाषा पाठशाला (श्री भविष्य निर्माण माध्यामिक विद्यालय पोखरा २१ कृस्ती, नाच्नेचौर) स्थापना भएको स्मारिका २०७९ पढेर खुशी लाग्यो। शिक्षाप्रेमी, समाजसेवी वहाँका पिताजीका जीवनी पुस्तकले इतिहासलाई जीवन्त, दूरदर्शितामा सुरक्षित राख्ने कार्य गरी भावी सन्ततिलाई ठूलो गुण लगाएको मलाई आभास भएको छ। सत्कार्यको प्रशंसा गर्दै वहाँको उज्ज्वल भविष्यको कामनाका साथै भौतिक तथा सामाजिक विकासको उत्तरोत्तर प्रगतिको थप प्रेरणा मिलोस् भनी हार्दिक शुभकामना व्यक्त गर्दछु। अन्य यस्तै कृतिहरू पनि सिर्जना गर्दै आगामी समयको अझै सफलताको शुभकामना व्यक्त गर्दछु ।

**मिति : २०८१/१०/०३**

**मा. विन्दुकुमार थापा**
**मन्त्री**

# पोखरा महानगरपालिका
## नगर कार्यपालिकाको कार्यालय
न्यूरोड,कास्की
गण्डकी प्रदेश,नेपाल

पोखरा महानगरपालिका
POKHARA METROPOLITAN CITY

फोन नं.: ०६१-५७१५०२
Postal Code: 6X9P+4F Pokhara
वेबसाइट: pokharamun.gov.np


पत्र संख्या : २०८१/८२
च.नं. : ३५१८

मिति : २०८१/१०/०६

## शुभकामना

तत्कालिन पश्चिम ४ नं नुवाकोट स्याङ्गजा स्थित कृस्तीनाच्ने चौर, हाल पोखरा २१ मा वि.सं.१९७४ बैशाख १९ मा जन्मनुभएको आदरणिय व्यक्तित्व स्व.टेकबहादुर रानाभाटको जीवनी उहाँको सुपुत्री इन्दु रानाभाटले प्रकाशन गर्न लागेको जानकारी पाउदाँ खुशी लागेको छ। उहाँ आफ्नो जन्मस्थानमा एउटा अविस्मरणीय शैक्षिक व्यक्तित्वका रुपमा परिचित रहनुभएको छ।

उहाँ वि.सं १९९५ मा घरबाट भागेर काठमाण्डौ गई नेपाली सेनाको गोरखनाथ गणमा सैनिक जवानको रुपमा भर्ति हुनुभयो । सोही समयमा सन् १९३९-१९४५ सम्म भड्किएको दोस्रो विश्वयुद्धको समयमा अंग्रेज सरकारको आह्वानमा तत्कालीन राणा सरकारले अंग्रेज सेनासँग सघाउनको लागि नेपाली सेनालाई पनि जापान र जर्मनी विरुद्धको युद्धमा भारत हुदै बर्मा सम्मको युद्वयात्राको अनुभव पनि उहाँले हासिल गर्नुभएको थियो।

स्व.टेकबहादुर रानाभाटले ३२ बर्ष सम्म गोरखनाथ गण राजदरबारको पल्टनमा सेवा गर्नुभएको थियो र उहाँले आफ्नो सेवा अवधिमा उत्कृष्ट कार्य गर्नुभएकोले २०२६ सालमा तत्कालीन राजा श्री ५ महेन्द्रबाट प्रबल दक्षिणबाहु, त्रिशक्ति पट्ट, दीर्घ सेवा पदक, बर्मा सरकारबाट BURMASTAR जस्ता सम्मानहरु प्राप्त गर्नुभएको र २०२६ मा उपसेनानी पदबाट सेवा निवृत्त हुनुभएको थियो।

उहाँले शैक्षिक तथा सामाजिक क्षेत्रमा गरेका गतिविधिहरुलाई समावेश गरेर प्रकाशन गर्ने पुस्तक व्यक्ति तथा संस्थाका लागि पठन योग्य र लिखित दस्तावेजका रुपमा रहने विश्वास व्यक्त गर्दछु । शैक्षिक तथा साामाजिक व्यक्तित्व स्व.टेकबहादुरको योगदानलाई सधैं स्मरणीय बनाउने विश्वास व्यक्त गर्दै पुस्तक प्रकाशनको **हार्दिक शुभकामना** व्यक्त गर्दछु।

मञ्जुदेवी गुरुङ
उपप्रमुख
**उप-प्रमुख**

# हार्दिक शुभकामना

**मेजर दिलबहादर गुरुङ** -MVO

मान्छेले प्राय भन्ने गर्छन् - सैनिक जीवन केवल रणभूमिको युद्धमा मर्न र मार्ने कार्यमा मात्र सीमित हुन्छ, तर कसैकसैको जीवनमा यो मान्यता लागू हुँदैन । लेफ्टिेन्ट स्व. टेकबहादुर रानाभाटले गरेका कृति विद्यालय स्मारिका पढेर थाहा पाएँ । उहाँले आफ्नो जीवनकालमा जन्मगाउँमा ज्ञानको ज्योति छर्नको लागि तत्कालीन श्री ३ महाराज पद्मशमशेरसँग विद्यालय माग गरेर स्थापना भएको विद्यालयको योगदानलाई ऐतिहासिक रूपमा सुरक्षित राखेको हुदाँ वर्तमान श्री भविष्य निर्माण माध्यमिक विद्यालयले उहाँलाई संस्थापकका रूपमा मान्यता दिएर सम्मान गरेकामा धेरै खुशी लाग्यो । ऐतिहासिक कार्यको सम्मानमा पुस्तक प्रकाशित गर्ने विचारले उहाँको सुपुत्री, आत्मीय बहिनी, पूर्व बैंकर इन्दु रानाभाट (बर्मा) लाई पिताजीको जीवनी पुस्तकमा शुभकामना दिन पाँउदा अपार खुशी लाग्यो । म स्वयम् बेलायतबाट मेजर पद लाहुरे जीवनबाट निवृत भएपनि आफ्नो जन्मभूमिमा केही गरौं भन्ने भावनाले शीतला माध्यमिक विद्यालय स्याङ्जाको विकास र विस्तारमा लागि पर्ने सु-अवसर जुऱ्यो । बहिनीको माइली फूपूसँग मेरी ममतामयी माता कन्याकुमारी (गौरा) ले वि.सं.१९९६ सालमा मितिनी (सैनीं) लगाएकी थिइन् । लेखिका इन्दुसँग मेरो बहिनीका मितिनी नाता थपिन आयो । यसैले मसँग आत्मीयतापूर्वक भावनात्मक पारिवारिक सम्बन्ध सामाजिक प्रगाढ राख्नलाई नै उपसेनानी टेकबहादुर रानाभाट मामाको जीवनीगाथाको शभुकामना दिन पाउदाँ खुशी थपिएको छ । इन्दुको कदमले पित्रीहरू समग्र रानाभाट समाज, जन्भूमिका विद्यालय परिवार एवं समग्र शैक्षिक जगतका लागि हर्ष र उमङ्गको विषय हो जस्तो लाग्छ । यस अर्थमा अर्को खुशी थपिएको छ । आत्मीय इन्द ुरानाभाट (बर्मा) सामाजिक भावनाको आत्मीय बहिनीले पिताजीका जीवनी पुस्तक प्रकाशित गर्नूभएकोमा पूर्ण सफलताको उत्तरोत्तर प्रगतिको मगंलमय शुभकामना व्यक्त गर्दछु ।

गल्याम फेदीखोला -४ स्याङ्जा,<br>
हाल पोखरा -८ वगालेटोल

# हार्दिक शुभकामना

हामी सबैका पिता लेफ्टिनेन्ट स्व.टेकबहादुर रानाभाटको जीवनीमा आधारीत पुस्तक उहाँकी सुपुत्री पूर्व हिमालयन बैंकर सामाजिक व्यक्तित्व इन्दु रानाभाट (बर्मा) वाट प्रकाशनमा आउँन लागेको जानकारी पाउँदा धेरै खुशी लागेको छ।

स्व. टेकबहादुर रानाभाट मेरो पिताजी भन्दा करिव १३ वर्ष जेठो हुनुहुँदोरहेछ। वि.सं. २०२७/०२८ सालमा म विद्यार्थी हुँदा नै तत्कालीन राखी गा.वि.स. वडा. नं ४ बरालडाँडाँमा मेरो पिताको घरमा आउनुभएको बेलामा पिताजीले वहाँ लेप्टेन मामा भनी परिचय गराउनुभएको अहिले जस्तो लाग्दछ।

नेपाली सेनामा भर्ना भई विश्वयुद्ध, विभिन्न पृष्ठभुमिवाट उठी आफ्नो अथक प्रयासले उपसेनानीको पद हासिल गरी परिश्रमी, मेहनती र लगनशीलताको प्रतीक हुनुहुन्थ्यो।

राणाकालीन समयमा श्री ३ पद्यमशमशेरका पालामा मौखिक विद्यालय माग गरी पुनः एक (१) वर्षपछि श्री ३ मोहनशमशेरका जुनाफमा लिखित मागले वि.सं.२००५।०७।०५ विद्यालय माग गरी विद्यालय श्री भविष्य निर्माण माध्यमिक स्थापना भएको पोखरा २१ जन्म गाउँमा अवस्थित स्मारिका २०७९ पढेर थाहा पाएँ। शिक्षाप्रेमी उहाँले लेखनाथ २६ मा भएको श्री रामज्योति विद्यालय, श्री भवानीकालिका माध्यामिक विद्यालयमा ठूलो भूमिका रहको थियो। पश्च्चिमाञ्चल पृतना हेडक्वाटर व्यारेकमा सेनाको नाताको कारणले गर्दा असल सुपरिभिजन कार्य गरेर सबैलाई खुशी तुल्याउनुभएको थियो। धार्मिक, सामाजिक व्यक्तित्व भनेर मेरा पिताजीबाट धेरै कुराको जानकारी पाएको थिएँ। मामासँग

मैले धेरै प्रेरणा शिक्षा पनि पाएको थिएँ ।

मेरो पिताले उहाँप्रति देखाएको इज्जत, सौहार्दताले गहिरो आत्मीयता, मित्रता थियो । समय परिस्थिती अनुसार मेरो बसाइ बुढीबजार २६ मा भएकोले उहाँ पनि कृस्ती २१ मा जन्मिएर राष्ट्रसेवा गरी जागिर रिटायर्ड भएपछि लेखनाथ सोही ठाउँ रिठ्ठेपानीमा जग्गा खरिद गरी घर बनाएर बस्नु थाल्नु भएकोले हामी छिमेकी भयौँ । त्यसैले वहाँका छोरी विन्दु, इन्दु, छोरा रमेश, राजेन्द्र रानाभाट, छोरी मीरा, इन्दिरा सबैसँग हाम्रो पारिवारीक राम्रो सम्बन्ध रहिआएको छ । समाजसेवा भावका रमेश, राजेन्द्र रानाभाट आफ्नो व्यापार व्यवसाय र समाजमा प्रतिष्ठापूर्वक हिडेका छन् । प्रेरणाको मूल सदस्य पिताको जीवनीमा आधारित पुस्तक प्रकाशन गर्न लाग्नु भएकी वहाँको छोरी लगनशील बहिनीलाई हार्दिक धन्यवाद दिदै प्रकाशित कृतिले समाजमा सदैव प्रेरणाको श्रोतको रूपमा रहने छ। विश्वासले अझै सफलता बढोस् भनी उत्तरोउत्तर प्रगतिको शुभकामना व्यक्त गर्दछु ।

**दीर्घनाथ बराल**
राष्ट्रसेवक
पूर्व-उपसचिव
पोखरा-२६, बुढीबजार
मिति : २०८१।१२।०१

श्री भविष्य निर्माण मा.वि.
पोखरा महानगरपालिका २१, कृस्ती,कास्की

☎ ९८५६०६६३१५

Shree Bhabishya Nirman Secondary school
Pokhara Metropolitan city -21, Kristi ,Kaski


पत्र संख्या:-081/ 082 ESTD 2009

च.नं. ६८ मिति:२०८१ । १० । २३

# शुभकामना ।

यस श्री भविष्य निर्माण मा.वि.का विद्यालय संस्थापक, शिक्षाप्रेमी तथा समाजसेवी स्व.उपसेनानी टेक बहादुर रानाभाटका सुपुत्री तथा यस विद्यालयको अक्षयकोषदाता, शुभचिन्तक, समाजसेवी श्री इन्दु रानाभाट(बर्मा) ले शब्द प्रकाशनबाट संसारलाई उज्यालो बनाउने महान कार्य अन्तर्गत आफ्ना पिताको सम्झनामा "सेनाको आँसुले झल्केको खुसी" नामक पुस्तक प्रकाशन गर्न लागेको थाहा पाउँदा म र विद्यालय परिवार अत्यन्त हर्षित भएको छौं ।

लगाव र उत्साहविना संसारमा कसैले पनि प्रगति गर्न सक्दैन । सो कुरालाई आत्मसात गर्दै तयार पार्नुभएको यस पुस्तक उत्कृष्ट छ । यस पुस्तकमा निहित विषयवस्तुले मानिसको सोचमा परिवर्तन र सकारात्मक सोच ल्याउने नै छ भन्ने कुरामा म विश्वस्त छु । साथै यस पुस्तकका पाठक समक्ष यस विद्यालयको पहिचानलाई समेत थप उजागर गर्न महत्वपूर्ण भूमिका खेल्न सक्नेछ भन्ने पूर्ण विश्वास छ ।

थोरै समयमा धेरै ज्ञान र सकारात्मक चिन्तन थप्ने ऊर्जा बोकेको यस पुस्तक लोकप्रिय बन्न सकोस् र उहाँका भावी प्रयत्नहरू अझै सार्थक र प्रेरणादायी बन्दै जाउन् साथै उहाँ र उहाँको परिवारजनको समेत उत्तरोत्तर उन्नति र प्रगतिको लागि हार्दिक शुभकामना ।

प्रकाश सुवेदी
अध्यक्ष
विद्यालय व्यवस्थापन समिति
श्री भविष्य निर्माण मा.वि., पोखरा- २१

# सद्भावात्मक अभिव्यक्ति

पूर्व बैंकर इन्दु रानाभाट आफ्नो गाउँ, समाजमा सुपरिचित नाम हो। सामाजिक क्रियाकलापमा संलग्न भई रहनु, मीठो बोल्नु, इमान्दार भएर आफ्नो कर्तव्य गर्नु र सहयोगी भावना राख्नु आदिले उनी व्यक्तित्ववान् बन्न पुगेकी हुन्। उनका सत् क्रियाकलापबाट म बालक छँदा नै परिचित थिएँ । अर्थात् इन्दु रानाभाटलाई म विगत लामै समयदेखि जान्दछु। साथीसँगाती, छरछिमेकी र आफ्ना बन्धुबान्धवसँग असल छोरीचेलीको पहिचान बनाउन सक्नु नै आज उनको व्यक्तित्व ऊर्जाशील बन्नुको कारण हो भन्ने मलाई लाग्छ। लेखन वा सिर्जनात्मक कार्य त्यति सहज छैन। यही सहज नहुनुका कारण सबैले लेखन तथा सिर्जनामा आफूलाई क्रियाशील पार्न सक्तैनन् । यस्तो कार्यमा संलग्न हुनका लागि विशेष क्षमतासीप र समय व्यवस्थापनका साथै विषयगत ज्ञानको पनि जरूरत पर्दछ। मनमा धेरै विषयहरू खुल्दुलीका रूपमा आइरहन्छन् । तिनलाई बोलेर व्यक्त गर्न पनि वाक् शक्तिक्षमताको आवश्यकता पर्दछ। लेख्य रूपमा प्रकट गर्न त्यो भन्दा चौगुना कठीन हुन्छ। त्यस्तो कठिनाई हुनुको पछाडिको मूल कारण भनेकै लेखनकला सुषुप्त हुनु वा शैक्षिक योग्यता नै कमजोर हुनु पनि हो। त्यही व्यक्तिले प्रयत्न जारी राख्यो भने ऊ महान लेखक वा सर्जक बन्न सक्छ। भाषा, साहित्य, कला र संस्कृतिका क्षेत्रमा लाग्नेसँग लेखेर, बोलेर अभिनय गरेर वा चित्रात्मक रूपमा भाव अभव्यक्त गर्ने कला हुन्छ। यस पृष्ठभूमिमा म लेखक इन्दु रानाभाट र उनको लेखन/सिर्जनात्मक गतिमा क्रमश वृद्धि हुँदै आएको देख्दा खुसी लागेको छ। म उनको लेखनीबाट धेरै कृति जन्मेको देख्ने पक्षमा छु।

अर्घौंबाट मेरो बसाइ पोखरा-१७,बेलघारीमा कायम भएपछि पनि इन्दुसँग संस्थागत कार्य गर्ने अवसर मिल्यो। मूलत : बरिष्ठ अधिवक्ता तिलक आचार्यको

नेतृत्वमा गठित बोध्दिक जागरण नेपाल नामक संस्थामार्फत् हुने क्रियाकलापमा हामी सहकार्यमा रह्यौं । बाल्यकलदेखि नै चिनजानमा रहेकी इन्दुलाई नयाँ बासस्थानमा प्राप्त गर्दा र एकै संस्थामा रहँदा खुसी लाग्नु स्वाभाविकै हो । उनको सक्रियता देख्दा मैले पटक पटक उनको बाल्यजीवनका क्रियाकलाप सम्झें । पछिल्लो चरणमा उनले हिमालयन बैंक लिमिटेड, रानाभाट समाज, रेडक्रस, एमनेष्टी इन्टरनेशनल लगायतका थुप्रै संघसंस्थामा आफ्नो संलग्नता देखाई सकेकी र कर्मगत परिपक्वता समेत् आर्जन गरेकी रहिछन् । सामाजिक र आर्थिक संस्थासँग जोडिएपछि परिपक्वताको तत्व बढी हुने नै भयो ।

उनै इन्दु आज आफ्ना कर्मठ पिताको विषयमा पुस्तक प्रकाशन गर्ने एक लेखिकाका रूपमा देखा पर्दा मलाई एक लेखक/स्रष्टाका हैसियतले थप खुसी लागेको छ । उनका पिता टेकबहादुर रानाभाट पनि कर्मठ व्यक्तित्व थिए । मलाई यतिबेला के अनुभूत भएको छ भने  कर्मठ टेकबहादुरले आफ्नो जीवनी लेखनका लागि कर्मठ छोरी इन्दुलाई जन्म दिएका रहेछन् । अहिलेको समाज क्रमश स्वार्थी बन्दै गएको अवस्था छ । राम्रा काम गर्नेलाई सके जीवितावस्थामै नभए पनि मृत्युपश्चात् प्रशंसा गर्ने वा कर्मको कदर गर्ने परम्परा बलियो हुन सकेको छैन । यसले गर्दा समाजका लागि धेरै योगदान गरेका व्यक्तित्वहरू अर्को पुस्तामा सम्झनाको पात्र नबन्ने अवस्था छ । लेखनकलाको विकास गरेकैले आज इन्दु आफ्ना पिताको जीवनी लेख्न सक्ने अवस्थामा पुगिन् । त्यसैले लेखनकला सबैले जान्नु आवश्यक छ ।

टेकबहादुर रानाभाटको नाम पोखरा कास्कीका लागि नौलो होइन । उनी देशका अन्यस्थानमा के कति चिनिएका छन् त्यो अध्ययनको विषय होला  तर आफ्ना दीर्घ प्रभावका कार्यले उनी यस क्षेत्रमा गणनायोग्य व्यक्तिका रूपमा रहेका छन् । उनका बारेमा हाल जेजति  विषय चर्चामा छन् ती विषयय मैले बालक छँदा नै सुने/बुझेको हुँ । निकट छिमेकी नभए पनि १ किलोमिटरको पेरिफेरी भित्रकै व्यक्ति कृस्तीको भाट गाउँमा जन्मेका उनी बाल्यकालदेखि नै जिज्ञासु प्रवृत्तिका थिए,सेवाको भावनाबाट प्रेरित थिए भन्ने कुरा मेरो बसाइ उनको जन्मस्थल निकट भएपछि सुने/जानेकै हुँ । हाल पनि उनका बारेमा सुन्ने अवसर पाई रहेछु । कृष्तीस्थित हालको भविष्य निर्माण विद्यालयमा मेरो आतेजाते भइरहने हुँदा पनि उनका बारेमा सुन्ने गर्छु । सो विद्यालय स्थापनाका लागि पद्मशमशेरलाई रिझाउने

र आफ्नो विद्यालय स्थनपना गर्ने  कारेय उनकै पहलमा भएकने देखिन्छ। कृष्ती क्षेत्रको सामाजिक र शैक्षिक विकासमा उनको योगदान गणनायोग्य भएर पनि उनको  सम्मान जति हुनुपर्ने हो वा उनका नाममा जे जति काम हुनुपर्ने हो त्यति हुन सकेको  पाइन्न।

पछि  उनी नेपाली सेनामा भर्ती भई कुशलतापूर्वक आफ्नो कर्मकर्तव्यमा खटेको र लेफ्टिनेन्ट दर्जा प्राप्त गरेको तथा दोस्रो विश्वयुध्दमा सक्रियता र निडरतापूर्व लडी उपसेनानी दर्जा प्राप्त गरेपछि उनको व्यक्तित्व थप उचाइमा पुगेको हो।

उनी पछि बसोबासका लागि अर्घौं गए पछि पनि उनले शिक्षा र समाज सेवाका कार्य छाडेनन्। अर्घौं भेकका रामज्योति प्रावि र भवानी कालिका माविमा मन,वचन,कर्म र धनले  उत्थानको कार्य उनले गरेको र स्थानीय समाजको विकासमा पनि त्यसै गरी लागेको तथ्य यस जीवनीपरक कृतिले चर्चा गरेकै हुँदा यहाँ धेरै चर्चा गरिरहन परेन।

अन्तमा यस कृतिका लेखक इन्दु रानाभाटलाई म सम्मनपूर्वक धन्यवाद दिन्छु। माता,पिता र गुरुलाई जसले राम्ररी चिन्छ र उनको कीर्तिगाथा गाउँछ  उसै ले जीवनयुध्द जित्छ। लेखक इन्दुले जीवनयुद्ध जितेकी छन्। पानामा लेखिएका अक्षरहरू विश्वमैदानभरि छरिन सक्छन् र जसले जसरी भएपनि पढ्छन्। आफ्ना पिताको जीवनगाथालाई विश्वसामु पुऱ्याउन उनले गरेको कसरत अनुकरणीय र प्रशंसनीय छ। आशा छ उनी  अन्यान्य खालका कृति लेख्न पनि सफल हुनेछिन्। त्यसका लागि  मेरो सद्भावात्मक हार्दिक शुभेच्छा छ।

माधव घिमिरे

**संचालक**

**छन्द बचाऊँ अभियान – २०५३**

**महाकाव्यलेखन अभियान – २०६०**

# प्रकाशकीय मन्तव्य

उप-सेनानी स्व. श्रद्धेय पिता टेकबहादुर रानाभाट एक अग्रज राष्ट्रभक्त र समाजसेवी हुनुहुन्थ्यो। दोस्रो विश्वयुद्धवाट काहाली लाग्दो तुफानबाट उठेर राष्ट्र एवँ गाउं विकासको लागि तत्कालीन सरकार प्रमुख सामुन्नै विद्यालयको माग गरेको इतिहास हामी सबैका लागि प्रेरणादायी कार्य थियो ।

श्री भविष्य निर्माण माध्यमिक विद्यालयले आफ्ना संस्थापकका रूपमा पुजनीय पिता उप-सेनानी टेकबहादुरलाई मान्यता दिएपछि उहाँको जीवन गाथा झनै सोधखोजको विषय बन्न पुग्यो । उहाँका सुपुत्री इन्दु अर्थात् मेरो प्रिय धर्मपत्नीले पिताको जीवनी लेख्न जमर्को गरेकी छिन् । पुस्तक प्रकाशन गर्ने जिम्मेवारी मलाई दिएकी र पूर्खाहरूले गरेका मूल्य मान्यता इतिहासका गर्विला धरोहर पुर्ख्यौली चेतनाका उदाहरण हुन् । उमेरले पाकेको, अनुभवले खारिएका देश समाज र कर्तव्य बोधको समुद्रमा नुहाएर मेरो विचार बुढेसकालमा मन्तव्य शुभकामना दिन पाउँदा अन्यन्त खुशी छु । दोषदृष्टि भन्दा मेहनतको प्राप्तिलाई मूल्याङ्कन गरी अघि बढनु नै आजको व्यवहारिक सत्य हुनेछ । बौद्धिक सिद्धान्त, अनुभव, मेहनतले तिखारिएर खिइएका अङ्ग, प्रत्यङ्गहरूको अनुभूति हो । यसलाई मैले अहोभाग्यको रूपमा लिएको छु । उपसेनानी श्रेद्धय पिता स्व.टेकबहादुर रानाभाटले वि.सं.१९९५ मा नेपाल, काठमाडौं राजदरवारमा नेपाल शाही सेनामा राष्ट्रसेवकमा रहेर दोस्रो विश्वयुद्धमा भाग लिन गएको सत्य तथ्य प्रमाण अनुसार उहाँले गरेका कीर्तिहरू देख्न पाउँदा राष्ट्रिय, सामाजिक भावनाले उत्प्रेरणाको रुपमा उहाँलाई चिनिने, कोरेका गरिमामय कीर्तिहरू पढ्न, देख्न पाउँदा धेरै खुशी लाग्यो । उहाँको डाईरेक्ट राजदरबारमा लिंक भएको जागिरको कारणले गर्दा यो कार्य सफल हुन सक्यो । आफ्नो जन्मभूमिको बिकासको लागि तत्कालीन सरकार प्रमुख सामुन्ने आफ्नो स्वार्थलाई नहेरी गाउँमा शिक्षाको ज्योति फैलाउने उद्देश्यले विद्यालयको स्थापना भएको इतिहास हामी सबैका लागी प्रेरणादायी कार्य हो । श्री ३ मोहनशमशेरको जुनाफमा विं.सं. २००५ कार्तिक ९ गते भाषा पाठशाला खोल्नको लागि लिखित

खड्कनिशाना जाहेर गरी स्थापना भएको भविष्य निर्माण माध्यमिक विद्यालय हो । नेपाली हामीहरूले चाडवाड मनाए झैं फाल्गुण १२ गतेलाई भव्य र सभ्य उपलब्धि तवरबाट चाडपर्वको रूपमा सम्झनुपर्दछ । स्थानीय आवश्यकताको आधारमा निम्न क्षेत्रहरूले ध्यान दिन सकेमा विकासको आधार बलियो हुने देखिन्छ । प्राथमिकता पहिचान गर्न सकेमा राष्ट्रले आवश्यकता योगदान गर्न सक्छ । शिक्षाबाट ज्ञान प्राप्त हुन्छ । ज्ञानले मानिसलाई माथि उठाउँछ । शिक्षाको क्षेत्रमा हेर्ने हो भने साक्षरताको प्रतिशत कम छ । सबैलाई साक्षर बनाउनु राज्यको दायित्व हो । साक्षर हुन पाउनु हरेक नागरिकको अधिकार हो । हरेक नागरिक सामान्य लेनदेनको हिसाब गर्न जानेर मात्र पुग्दैन । नयाँ नयाँ उपलब्धिमूलक हुनुपर्दछ । यो शिक्षाको पहिलो तह परिवारको दायित्व हो । आधारभूत ज्ञान भनेको समय, स्थान, आत्मज्ञान र विज्ञानको साथ साथै गर्नु हुने र नहुने सही र गलत ठीक र बेठीक छुट्याउन सक्ने सामान्य ज्ञान नै आधारभूत ज्ञान हो । यो विद्यालयबाट निस्कँदा सुसंस्कृत, व्यवहारिक कर्मशील एवं जिम्मेवार र अनुशासित बनेर निस्कनु आफ्नो अविभावकको चाहाना हुन्छ । त्यसैले यस्तो प्रकारको शिक्षाले महान महान भएर देशलाई काँध थाप्न जिम्मेवार बोक्न सक्ने आजको आवश्यकता छ । सादा जीवन उच्च विचार पृथ्वी जोगाउने मुख्य आधार हो । राज्यले सार्वजनिक नीतिको आधारमा शासन गर्दछ । निश्चित नीतिविनाको राज्य सञ्चालनमा नाउ विनाको डुङ्गा जस्तै हो ।

राज्यको माथिल्लो तहमा बसेका नीति निर्माताहरू र सम्पन्न वर्गले आफ्ना छोरा छोरीहरूलाई अन्तर्राष्ट्रियस्तरको गुणस्तरीय शिक्षाका लागि महङ्गो शुल्क तिरेर विदेशी तथा स्वदेशी निजी विद्यालयहरूमा पढाउँछन् । जसको प्रभाव समाजमा बुद्धिजीवी मानिने शिक्षक र कर्मचारीहरूमा पर्दछ । सामुदायिक विद्यालयमा अध्यापन गर्ने शिक्षकहरूले संस्थागत विद्यालयमा आफ्ना छोराछोरीहरूलाई पढाउन रुचि राख्नाले त्यसको प्रत्यक्ष असर त्यहाँको स्थानीय समाज तथा सर्वसाधारणमा पर्न जान्छ । त्यसैले समाजका अभिभावकहरूको विश्वास कम भएका कारणले सामुदायिक विद्यालयमा विद्यार्थीको सङ्ख्या कम हुन गएको हो कि ? सामुदायिक विद्यालयमा विद्यार्थी घट्दै जानुको अतिरिक्त कारणहरू मान्न सकिन्छ । विद्यालय र समुदायबीच व्यक्तिगत विवाद हुनु, अनाअवश्यक राजनीति हस्तक्षेप हुनु पनि हुन । अभिभावकको आर्थिकस्तर न्यून हुनु सुशासनको अभाव हुनु, अभिभावक र विद्यालय सञ्चालनको जिम्मा सरकार र शिक्षक मात्र हुन भन्ने धारणा राख्नु । विद्यालयका शिक्षकमा व्यवसायिक प्रतिवद्धताको कमी, इत्यादि कारणले पनि स्तर

खस्कन सक्छ। त्यसैले हामी होशियारपूर्वक योग्यता तथा क्षमताको आधारमा भौतिक योजना एवम् कार्यक्रमहरूको निर्माण गर्न अति आवश्यक छ। प्रभावकारी अध्ययन, अध्यापन गर्न लगाउने, हौसला बढाउने खालका कार्यक्रमहरू राख्ने, मैत्रीपूर्ण वातावरण बनाउने, योग्यता तथा क्षमताको आधारमा भौतिक योजना एवम् निर्माण कार्यक्रम निर्माण गर्ने। बोर्डिङ्ग स्कूलभन्दा सरकारी स्कूलमा राम्रो पढाइ हुन्छ भन्ने जनचेतनाको विकास हुनु आजको परिप्रेक्ष्यमा अति आवश्यक छ। हालको परिवेशमा सामुदायिक र संस्थागत विद्यालय बीचको शैक्षिक उपलब्धिमा अन्तर देखिएता पनि सुधारोन्मुख रहेको छ। सामुदायिक विद्यालयमा तहगत दरबन्दीको व्यवस्था, अनुभवी योग्यता पुगेका विषयगत दक्ष शिक्षक कार्यरत भएको हुदाँ सम्बन्धित निकायहरूबाट राम्रो व्यवस्थापन तथा अनुगमन गर्न सके सन्तोषजनक प्रगति हुन सक्ने कुरामा दुईमत हुन सक्दैन।

इतिहास पल्टाउदाँ वहाँका चौतर्फी सोच र बौद्धिक विचारले राष्ट्र र समाजलाई प्रभाव पारेको देखिन्छ। मैले पनि राष्ट्रको सेवा गरेँ तर त्यो छवि छर्न सकिरहेको छैन। जीवनभरि राष्ट्रसेवा गरेँ। तर फर्केर हेर्दा मैले केही पनि नगरेको महसुस भयो। जहाँको योगदानहरू स्मरणीय र कहिल्यै नमर्ने अमर भएको अनभूति गरेको छु। सधैं सधैं मन मष्तिक र स्मृतिले उच्चसम्मान सहित नमन गर्दछु। पुस्तक प्रकाशनको कार्यलाई अहोभाग्यको रूपमा लिएको छु। पिताले गरेका पारिवार रिक  सामाजिक राष्ट्रिय कर्मसँग यस क्षेत्रमा गरेका कीर्तिहरू देख्न पाउँदा शिक्षाको गरिमामय कीर्तिहरूले मानवता, निष्पक्षता, तटस्थताले ऐच्छिक, एकता, भएको महसुस गरेको छु। विशुद्ध रूपमा निस्वार्थ सेवा र सहयोगले नै जाति, धर्म लिङ्ग सम्प्रदायको मानवबन्धनको कर्तव्यको भावना राख्दछु। गरिमामय साझा फूलवारीमा कार्यहरूलाई अझै आयतन बढाउन सरकार विभिन्न निकायहरूको पहलमा माथि पुगोस् भन्ने सम्वृद्धि एवम् उत्तरोत्तर र प्रगतिको हार्दिक शुभकामना व्यक्त गर्दछु।

मिथिलेशकुमार बर्मा
०७१/१०/२८

**श्री मिथिलेसकुमार बर्मा**
**सिभिल इन्जिनियर**
**राष्ट्रसेवक, पूर्व कर्मचारी**

# लेखकको भनाइ

लेफ्टिनेन्ट (उपसेनानी) श्रद्धेय पिताजी स्व.टेकबहादुर रानाभाटले दोस्रो विश्वयुद्धको कहालीलाग्दो इतिहासको रणभूमिबाट बचेर विभिन्न ठाउँबाट माथि उठेर देश (राष्ट्र) तथा जन्मभूमिको इतिहास झल्काउने प्रेरणाले अत्यन्त गरिमामय भूमिकालाई उदाहरणीय रुपमा लिएकी छु।

पृथ्वीका मानवजातिका अभिभवीसँग कर्मको जन्म भएको हुन्छ। नवजात शिशुले आमाको कोखबाट निस्केर च्याँच्याँ ध्वनीको साथ आफ्नो जन्म घोषणा गर्दा गतिले जन्म लिएको हुन्छ। जन्मेदेखि विभिन्न शिक्षा संस्कार बटुलेर पढेर, लडेर घोटिएर, रगत छादेर, निचोरिएर दौडिएर, आँसुका घुट्का पिएर धारिलो पक्का ब्रह्मज्ञानको तरवार तव बन्छ। यही गतिले मृत्युसम्म गरेका कर्महरूले नै राम्रो नराम्रो इतिहास बनेको हुन्छ। मृत्यु पछिका सम्झना र कृतिहरू नै मान्छेको अभिन्न अङ्ग हुन्। कास्कीको पोखरा हरियाली सुन्दर डाँडाकाँडा। माछापुच्छ्रेको सेताम्य टल्कने हिउँ। उत्तरदक्षिण फैलिएको फेवातालमा परेको छायाँ। जमिनमुनि लुक्दै कहीले झलक्क कहिले सर्लक्क परेर गोरो अनुहार देखाउँदै बग्ने प्रसिद्ध सेती नदीको सुन्दरताले भरिएको कास्की जिल्ला। फेवातालको पश्चिमपट्टिको डाँडामा स्थापना गरिएको शान्तिस्तूप, दोपहरेबाट देखिने अन्तर्राष्ट्रिय विमानस्थल, उत्तरमा चम्किएको धौलागिरि, अन्नपूर्ण र माछापुच्छ्रेका लोभलाग्दा दृश्यले धन्य छौं हामी। सोही ठाउँमा जन्मेका हाम्रा कस्केली पुर्खाहरूको हसिलो र रसिलो कल्पनाका आकृतिका अनुहारहरू झल्काउनु हाम्रो कर्मका पाटाहरूले प्रमाणित गर्दछ। समयको परिवर्तनसँगै जनसङ्ख्या वृद्धिका साथसाथै मानवीय शिक्षाको चेतनाले विकासलाई नियाल्नु हाम्रो आवश्यकता हो। शिक्षा आँखाको नानी, चेतनाको बीउ हो। शिक्षाले विश्वलाई

चिनाउने जर्मको गर्दछ र लक्ष्य राख्नुपर्दछ। पूर्वदेखि पश्चिमसम्म शताब्दीऔँदेखि रहँदै आएको समाज, देशको चौतर्फी विकासमा इमान्दार र देशभक्त नागरिक समाजका रूपमा गरेका योगदानले कृतज्ञता महसुस गर्दछु। आजको एक्काइसौं शताब्दी विज्ञान र प्रविधिको युग, जात धर्म, वर्ण, लिङ्ग र कुनै सम्प्रदाय विशेषको तहभन्दा धेरैमाथि उठेर विकासको उच्चताको नवीन अवधारणका अगाडि जातीय मूल्य मान्यता र सङ्गठनको विषयवस्तु ओझेलमा पर्न सक्छन्। पुर्ख्यौली चेतनाका इतिहास प्राण हो। जीवनको ऊर्जाशील समय राष्ट्र एवम् जनताको हित, सामाजिक सेवामा समपर्ण गरी आर्जित ज्ञान, सीप, अनुभव र जगतको मीठो, नमीठो यात्राहरूको सँगालोलाई नै जीवन भनिन्छ।

पिता हामी सबैका अभिभावक उपसेनानी टेकबहादुर इतिहासका पानाहरूमा पुर्खाले कोरेको कृतिका बाटाहरूले नै भावीपुस्तालाई अनुकरणीय सन्देश प्रवाह गरेको हुन्छ। पूर्खाहरूले लब्धप्रतिष्ठित व्यक्तिहरूका अन्र्तनिहित प्रतिभालाई प्रस्फुटन गर्ने विचारले यो किताव लेखेकी छु। किताव पुनर्जागरणको प्रकाशनको प्रौढता प्रर्दशन गर्ने खोजेको भोलिका दिनहरूमा कृति, सामाजिक, शिक्षा विकास र राष्ट्र उत्थानको सामुहिक अभियानमा केवल हजुरहरूको निरन्तरता शुभेच्छाको खाँचो रहेको छ। समाजको खुशीको लागि केही अंश समर्पण गर्नुपर्दछ। भविष्य निर्माण माध्यमिक विद्यालय स्थापना भएको ७६ वर्ष भइसकेता पनि कता कता मलाई लागिरहेछ - ओझेलमा परेको पो हो कि ? तर पनि सोचेजति उन्नति नभएको टुहरोजस्तो अनुभव भइराखेको छ।

समाजमा देखापरेका विषमता, अज्ञानता, अशिक्षा, गरिबी विरुद्ध लडेर शिक्षा, संस्कार, सभ्यता र सम्पन्नतातर्फ लाग्नुपर्दछ। समय अनुकूल बनाउनतर्फ हामी सबैको कर्तव्य र अधिकार हो। राष्ट्रको सम्वन्धित निकायहरू सहयोगको अपेक्षा पर्खेको पो हो कि ? पहिलो प्रयासमा भएका मेरा थुप्रै कमी, कमजोरीलाई यहाँहरूका न्यायिक सुधारात्मक सुझावहरूले परिपक्क हुने मौका प्रदान गर्नुहुनेछ भन्ने अपेक्षा राखेकी छु। साथै प्रस्तुत कितावमा सत्य तथ्य, सूचना ज्ञान र इतिहास प्रवाह गरी सु-संस्कृत र जिम्मेवार नागरिक बन्ने प्रेरणा दिन सकोस् भन्ने आशा राखेकी छु।

पिताजीले हामी सानो हुँदा पारिवारिक कुराहरूदेखि लिएर पल्टनमा नोकरी गर्दाका सुख, दुःख, विश्वयुद्धमा भोगेका कष्टहरू सुनाउनु हुन्थ्यो। देशको लागि ज्यान गए जान्छ ज्यानको माया हुँदैन। त्यतिबेला कुरा गर्दा बडो जोशले रगत

तातेर वहाँको रगत उम्लेजस्तै भान हुन्थ्यो । रगत छाद्ने गरेर तालिम गर्न लगाउँथ्यो उहाँले भोगेका व्यथाकथाहरू वेलाबेलामा सुनाई राख्नुहुन्थ्यो। हामीहरू बडो उत्सकतापूर्वक सुन्दथ्यौं । २००७ सालको प्रजातन्त्र प्राप्ति देखि स्कूल स्थापनाका इतिहासहरू हाम्रो बालमस्तिष्कले ती कुरा आफ्नै तालले पचाइदिन्थ्यौं । त्यतिखेर हामीहरू ठूलो  भएको भए केही बुझ्ने थियौं । पिताजीले गर्नुभएको योगदान महत्वपूर्ण भएको अहिले आभाष भएको छ। यातायात, सञ्चारको सुविधा नभएको समयमा विद्यालय स्थापना, सञ्चालन गर्नु कठिन विषय थियो । विभिन्न कारणले गर्दा यतिका वर्षसम्म पत्ता नलागेको सत्यतथ्य इतिहास जब बाहिर आयो, श्रद्धेय पिताजीलाई विद्यालयको संस्थापकका रूपमा स्वीकार गऱ्यो, तब मलाई लाग्यो उहाँको विद्यालय हातामा एउटा सालिक भैदिए ? स्मृतिका पानाहरू पल्टाउन थालें । जग्गादाता स्व. प्रेमबहादुर कार्की, प्रथम शिक्षक पं. बावुराम रेग्मी, वहाँहरूको सहयोगले नै विद्यालय सुचारु भयो। वि.सं. २०७९ मा प्रकाशित भविष्य निमार्ण मा.वि.को स्मारिकामा दाजु नारायण रानाभाटले लेख्नुभएको रहेछ । अघौँका उपसेनानी टेकबहादुरले विद्यालयमा आएर बेलाबेलामा सोधखोज र धेरै चासो राख्नुहुन्थ्यो । यो पृष्टाईंले खुशी लाग्यो । भाइखलक बलबहादुर रानाभाट, चेतबहादुर रानाभाट (कुज) जयबहादुर रानाभाट, भक्तबहादुर थापाहरूलाई र सहेदार झपट कार्की, मेखबहादुर रानाभाट, पूर्ण ब. रानाभाट, थिरबहादुर रानाभाटहरूले विद्यालयलाई अगाडि कसरी बढाउने ? अब तिमीहरूले सम्हाल्नु पर्दछ भनेर नीति निर्देशन सल्लाह, सुझाव र विचार दिनुहुन्थ्यो । सत्य तथ्य प्रमाणहरूको सँगालोको लागि पनि मैले उहाँको प्रेरणादायी जीवगाथा पुस्तक भइदिए कति गहकिलो हुन्थ्यो ? यस्तै विचार मनमा आइरहन्थ्यो । यही विचार र भावनाले मलाई पिताजीका बारेमा पुस्तक लेख्न मन लाग्यो । पितृहरूले दिएको आर्शीवाद हामी सबैलाई वर्षा भइरहेको छ । अतीतका सम्झना र स्मृतिहरू वर्तमानमा कथाजस्तै लाग्ने कहिले सुख कहिले दुख दुवै सम्झनाहरू मेरो मन मष्तिस्क पानामा पल्टिरहन्छन् । हाम्रा अग्रजले राखेका यस कृति देख्दा यही ठाउँमा आई मनभरिका वेदना धोका फेरी रून मन लाग्छ।

यही विद्यालयबाट ज्ञानको सुरूआत गरेर विद्यार्थीहरू ठूलाठूला पदमा पुगी राम्रो छवि छर्ने डा. रामचन्द्र पोखरेल, बाबुराम दाहाल, डा. मीनबहादुर रानाभाट, डा. सी.पी. आचार्य, सरकारी कर्मचारी दीपक दाहाल, रामचन्द्र पौडेल, हर्कबहादुर रानाभाट, नारायण रानाभाट, विभिन्न समाज, पुस्ता पुस्ताको योगदान रहेको छ।

गर्व र श्रद्धाले भरिएको महान हस्तीहरू हाम्रो शान, मान बचाएको पुन्यभूमि कृस्ती २१ नाच्नेचौर कास्की हो । जबसम्म यो विद्यालय छ, तबसम्म जीवित पुर्खाहरू र वर्तमान छ। यहाँहरू र हामी छौं ।

पुस्तक लेख्ने प्रेरणाका श्रोतको रूपमा श्रद्धेय परमात्मा पूर्खा पिताहरू र श्री भविष्य निर्माण मा.वि, बचाउँन अहोरात्र खटिने पूर्व अध्यक्ष कमलकुमार भुजेल, भाइबहिनीका टिमहरूले गरेका कर्ममाथि सत्कर्म उकासेको पृष्ठयाई विगतले जनाएको छ।

सहयोग पुऱ्याउने सबै समाज, पुज्जनीय दिदी, विन्दु, श्रद्धेय पतिदेव, इन्जिनियर मिथिलेशकुमार वर्मा, जेठाजु डा. राजेन्द्र विमल, पूर्व कर्णेल मदन के.सी., वरिष्ठ पत्रकार लेखक रवीन्द्र माकाजू, प्यारो भाइ रमेश, राजेन्द्र रानाभाट, बहिनी मीरा, ईन्दिरा, सुझाव सल्लाह र उत्साहले घच्घच्चाई राख्ने, प्रत्यक्षअप्रत्यक्ष, सबैको सहयोगले गर्दा पुस्तकको आकार बन्यो । समाज परिवर्तन, न्यायको लागि लडेको र समानताको पक्षमा देखाउनु भएको दृढअडान र त्यागपूर्ण जीवन सदा प्रेरणाको स्रोत रहनेछ । यस धरतीमा वहाँ नरहे पनि वहाँको बौद्धिक विचार, युद्धका तुफान रणभूमिका पृष्टबाट उठी समाजमा पस्केका कृतिहरू अभ्युदयपूर्वक सदा बाँचिरहने छ।

**कविता**ः देश र नरेश महेन्द्रको आर्दश वहालीमा
देशभक्त र एकतामा गहकिलो ऊर्जाशील कर्ममा
स्वच्छ विचार निर्मल बनी छोडेर स्वार्थीपन
देश र जनाताको लागि छोडिदिन्छु यो जीवन

**पिताको : स्मृतिमा छचल्केका छालहरू**

प्राकृतिक हरिलो परिलो, कन्धराहरू, हिमाल, पहाड तराईहरूमा,
अधुरा सपनाहरू हजारौं हजारको मानको काँध माथि बिसाइ ।
पुर्खा, पिता, महान देवत्व आत्माहरूलाई, नमन, कृतज्ञता गर्दछु ।
शान्ति मिलोस् हार्दिक श्रद्धाञ्जली, रोदनको आँसुको भाषामा
नमन् कामना गर्दछु, वीर पुरुषका स्मृति गाथामा ।

**इन्दु रानाभाट**
**लेखिका**

# विषयसूची